द महेशचन्द्र रेग्मी लेक्चर, 2003

# त्रिशूल र दोर्जे

## नेपाली राजनीतिमा सामाजिक परिवेश

हर्क गुरुङ

सोशल साइन्स बहाः
SOCIAL SCIENCE BAHA

सोसल साइन्स बहाःद्वारा 24-26 अप्रिल 2003 मा काठमाडौँमा आयोजित सम्मेलन
'द एजेन्डा अफ् ट्रान्सफर्मेसनः इन्क्लुजन इन नेपाली डेमोक्रेसी'मा प्रस्तुत

मानवअधिकारको उल्लङ्घन आन्तरिक र अन्तर्राष्ट्रिय वित्यासको
अवश्यम्भावी कारक तत्त्व हो। संसारमा देखा परेका शक्तिशाली
पृथकतावादी आन्दोलनलाई उपेक्षाले सघाउ पुऱ्याएको छ।
व्यापारदेखि सञ्चारसम्मका क्षेत्रमा विश्वव्यापी (बाहिरिया)
शक्तिहरूले राष्ट्रिय सार्वभौमसत्ता क्षय गराउनुका साथै
विरोधाभास रूपमा सोको पृथकतावादी प्रवृत्तिलाई
टेवा दिएको छ : फरक धारणा राख्ने अधिकार,
दुःखको कुरा, विभाजनको सङ्घर्ष
हुन गएको छ।

**– नेल्सन मण्डेला**



अनुवादः शिवमाया मैनाली

प्रथम संस्करण : सन् 2003

प्रकाशक
**सोसल साइन्स बहाः**
हिमाल एसोसिएसन
पाटनढोका, पो.ब.नं. १६६, ललितपुर, नेपाल।
फोनः 5542544/5548142 • फ्याक्सः 5541196
इमेलः baha@himalassociation.org
वेबसाइटः www.himalassociation.org/baha

ISBN 99933 43 45 5

## (क) उठान

वैचारिक द्वन्द्वलाई प्रभावित गर्न शक्ति-चिह्नहरू प्रयोग गरिन्छ। उदाहरणका लागि परापूर्वकालमा दुम्सीको काँडालाई दैवी-बाणका रूपमा लिइन्थ्यो। जनजातिका पुरेतले अहिले पनि त्यसलाई उपयोग गर्छन्। आदिम शमन-धामीको मन्त्रलाई क्रमश: तान्त्रिक विधि र सूत्रात्मक दर्शनको परिष्कारले विस्थापित गर्दै गए। यही क्रममा तान्त्रिक फुर्वा महायानी दोर्जे अर्थात् बज्रमा रूपान्तर हुन गयो। त्रिशूलको सम्बन्ध हिमालयका महादेवसँग छ। हिन्दूहरूले महादेवलाई त्रिदेवमध्येका एक मानेकाले उनी पक्कै पनि शक्तिशाली शत्रु थिए होला। उनलाई हिन्दूहरूले शिवको रूप दिए पनि तान्त्रिक परम्परामा उनी भैरवका रूपमा पाइन्छन्। त्रिशूल र दोर्जे दुवै हिमाली सम्पदा हुनाले यिनलाई एकअर्काका विरोधीका रूपमा लिनु पर्दैन। तथाकथित एघारौँ शताब्दीमा शङ्कराचार्यको आक्रमणपछि पनि नेपालको मुटु काठमाडौँमा धार्मिक सहिष्णुता थियो। तर पछि नेपाल आएका विजेताहरूले आफ्नो भाषा, संस्कृति र धर्म लाद्ने संस्कारबाट त्यस्तो सहिष्णुता ध्वस्त पारे।

अधिकांश राज्यहरू एउटा केन्द्रबिन्दुबाट वरिपरि विकास हुन्छन् र सीमा विस्तार अभियान तथा शक्तिका आधारमा फैलिँदै जान्छन्। नेपालका सम्बन्धमा पनि यही कुरा लागू हुन्छ।[1] अठारौँ शताब्दीको मध्यतिर गोरखा राज्यले सुरु गरेको सीमा विस्तार अभियानको फलस्वरूप नेपालको निर्माण भएको हो। गोरखाली शासकहरूद्वारा राजनैतिक रूपले एकीकरण गरिएको नेपालमा विविध भौगोलिक र सांस्कृतिक प्रदेशहरू समेटिएका थिए। नेपालको भौगोलिक परिधि ककेसई र मंगोलई जातिका मानिसहरूको जम्काभेट भएको थलो हुनाले आआफ्नै खालका सामाजिक विशेषता थिए। विजेताहरू ककेसई जाति, भारोपेली भाषी र हिन्दू वर्णाश्रममा वर्गीकृत थिए। आदिवासी मंगोलईहरू आआफ्नै थलो भएका, भोट-बर्मेली भाषा बोल्ने समतामूलक जनजाति थिए। नेपाल राज्यको स्थापना पहाडको मुख्य भूभागमा हिमाली र तराई इलाकाहरू गाभेर बनेको हो।[2] राज्यको मूल धर्म हिन्दू तथा राष्ट्रिय भाषा गोर्खाली

---

[1] गुरुङ, 1989, पा. 134

[2] बर्घट, 1984

(नेपाली) हुन गयो। हिन्दूकरणको अभियानमा जनजाति भूमिको अतिक्रमण गरियो। उनीहरूलाई जातमा विभाजन गरियो। यसप्रकार, नेपालको राष्ट्रिय पहिचान पर्वते हिन्दू अभिजात समूह र तिनको मातृभाषाका आधारमा स्थापित गरियो।

## (ख) एकाधिकारवादी राज्य-व्यवस्था

हिन्दुस्तानमा एघारौँ शताब्दीमा मुसलमानको आक्रमण सुरु भएपछि त्यसको प्रतिक्रियास्वरूप नेपालका पहाडमा हिन्दूहरूको प्रभाव फैलन थाल्यो। काठमाडौँ उपत्यकामा जयस्थिति मल्ल (1382-1395) ले नेवार समाजमा जात प्रथा लागू गरे। राम शाह (1605-1633) ले यही ढाँचालाई मोटामोटी रूपमा अनुसरण गर्दै गोरखामा लागू गरे। पाल्पादेखि विजयपुरसम्मका सेन शासकहरूले आफूलाई हिन्दूपति घोषणा गरे। भारतमा बढिरहेको मुसलमान चपेटाबाट बच्नका लागि धर्मतन्त्रात्मक शासन पद्धतितर्फको झुकाउ बढ्यो। तर भारतमा मुगलहरूको पतनपछि इसाईधर्मी अङ्ग्रेज शासन सुरु भयो। यस्तो ऐतिहासिक बाध्यतावश, पहिले मुसलमान र त्यसपछि इसाई धर्मका विरुद्धमा हिन्दू संसार बनाउने उद्देश्यले नेपालको शासनमा ब्राह्मण कट्टरताले प्रधानता पायो। पृथ्वीनारायण शाहले काठमाडौँ उपत्यका जितेपछि सर्वप्रथम पाटनका क्यापुचिन पादरीहरूलाई देश निकाला गरे र नेपाललाई 'असली हिन्दुस्तान' भनी परिकल्पना गरे। परिणामस्वरूप हिन्दूकरण नेपाल राज्यको मूलमन्त्र तथा उद्देश्य हुन गयो।[3]

सन् 1854 मा नेपालका हिन्दूकरण भएका केही भागहरूमा लामो समयदेखि प्रचलनमा रहिआएका सामाजिक संस्कारलाई लिपिबद्ध कानुनका रूपमा *मुलुकी ऐन* जारी गरियो। यस ऐनको वैदिक जात-ढाँचा वर्ण-व्यवस्थाभन्दा केही फरक थियो। जनजातिलाई 'शुद्ध' तथा 'अशुद्ध' जातका बीचमा राखेर नेपाली समाजलाई तीन मुख्य वर्गमा विभाजन गरियो। ती वर्गलाई पनि निम्न पाँच मर्यादाश्रेणीअनुसार राखियो:[4]

(1) तागाधारी

(2) नमासिने मतवाली

[3] गुरुङ, 1987

[4] होफर, 1978, पा. 45



(3) मासिने मतवाली

(4) छोइछिटो हाल्न नपर्ने अछूत

(5) छोइछिटो हाल्न पर्ने अछूत अर्थात् मा जु पिं

सो व्यवस्थाअनुसार बाहुन, छेत्री र ठकुरीजस्ता पर्वते शासक जातहरूलाई ठालु स्थापित गऱ्यो। तराईका ब्राह्मणहरूलाई तागाधारी वर्गमा राखिएको भए तापनि छेत्री र नेवार ब्राह्मणभन्दा तल्लो स्तरमा राखियो। नेवार ब्राह्मणलाई छेत्रीभन्दा तल्लो स्तरमा राखियो। अघिदेखि गोरखा राज्यको सहयोगी रहेका मगर र गुरुङहरूका साथै सन् 1825 मा बाहुन चलाउन लालमोहर पाएका सुनुवारलाई दोस्रो श्रेणी (2) मा राखियो। गोरखाली शासनअन्तर्गत पछि आएका जनजातिहरू राई र लिम्बूका सम्बन्धमा यस मर्यादाक्रममा केही उल्लेख छैन। सीमान्त इलाकाका भोटे, थारू, अल्पसङ्ख्यक जनजाति तथा मुक्त दासका सन्तान घर्तीहरू तेस्रो श्रेणी (3) मा राखिए। पहिलोदेखि तेस्रोसम्मका जातलाई छूत र चौथो र पाँचौँ श्रेणीका जातलाई अछूत मानिएको थियो। अछूतमध्येमा पनि छोइछिटो हाल्न नपर्ने र छोइछिटो हाल्न पर्ने भनी विभाजन गरियो। चौथो श्रेणी (4) मा उल्लेख गरिएका छवटा अछूत जातमा चार नेवारका उपसमूह, मुसलमान र म्लेच्छ (कुइरे) थिए। सबैभन्दा तल्लो श्रेणी (5) मा पर्वते कमसेल जातहरू र दुई नेवार उपसमूहका तल्ला जात राखिएका थिए। यस *मुलुकी ऐन* ले मधेसी जातहरूको व्याख्या गरेको छैन। व्यक्तिका जातका आधारमा एउटै अपराधमा पनि फरकफरक सजाय दिने व्यवस्था यस *मुलुकी ऐन*मा गरिएको थियो।

*मुलुकी ऐन* घोषणा भएको नब्बे वर्षपछि यसको अछूतसम्बन्धी व्यवस्थामा केही संशोधन गरियो। *नेपालको संविधान 1990* ले राज्यले धर्म, वर्ण, लिङ्ग, जातजाति र विश्वासका आधारमा नागरिकहरूलाई भेदभाव गर्ने छैन भन्ने कुरा उल्लेख गर्दै समानताको हकको प्रत्याभूति गरेको छ (धारा 11.3)। तर सन् 1992 मा संशोधन गरिएको *मुलुकी ऐन*को एउटा धाराले धार्मिक स्थलहरूमा गरिने परम्परागत प्रचलनहरूलाई मानिने छैन भन्ने कुरा उल्लेख गरेर उपरोक्त संवैधानिक अधिकारलाई कुण्ठित गरेको छ। अर्को शब्दमा, परम्पराका आधारमा अछूतका रूपमा वर्गीकरण गरिएका जातकालाई मन्दिर र पवित्रस्थलमा प्रवेश गर्ने अधिकार कायम भएन। यसप्रकारका परम्परागत प्रचलनलाई स्वीकार गर्नु भनेको जनजाति र दलितलाई तिरस्कार गर्नु र अन्य क्षेत्रमा पनि विभेद कायम राख्नु हो। यसरी 'विश्वको एउटैमात्र हिन्दु अधिराज्यमा'

सामाजिक विभेद र छोइछिटो दैनिक अनुभवको वास्तविकता रहिआएको छ।

कुनै पनि देशको वर्तमान स्वरूपलाई इतिहासले निर्देशित गरेको हुन्छ। मध्यकालदेखि यताको नेपाललाई हेर्ने हो भने यसका तीनओटा स्वरूपहरू देख्न सकिन्छ: (1) काठमाडौँ उपत्यकाको पुरातन नेपाल, (2) सतलज र टिस्टा नदीबीच फैलिएको साम्राज्यवादी नेपाल र (3) मेची र महाकाली नदीबीच रहेको सामन्ती नेपाल।[5] नेपाल धेरै लामो समयदेखि स्वाधीन रहिआएको राज्य भए पनि अझसम्म राष्ट्रका रूपमा विकसित हुन सकेको छैन। नेपाल देश भौगोलिक रूपले मात्र एकीकृत भएको छ सामाजिक र आर्थिक रूपले होइन। राष्ट्रिय एकीकरणको सामाजिक ढाँचा अहिलेसम्म पनि हिन्दूवादी छ जुन देशको जगका रूपमा रहेका बहुसङ्ख्यक जनजातिको ढाँचासँग पटक्कै मेल खाँदैन। राज्यले अपनाएका विभेदकारी नीतिले गर्दा बहुचर्चित दिव्योपदेशमा उल्लेख भएका चार जातलाई फूल र छत्तीस वर्णलाई झार ठानिएको छ।

नेपाली समाजलाई सीमापारिको समाजसँग तुलना गर्ने हो भने *मुलुकी ऐन*को परम्परागत जक्कडबारे स्पष्ट हुन्छ। पश्चिम नेपालका डुम (दलित) माथि अहिले पनि एक शताब्दीअघि कुमाउँ र गडवालका डुममाथि गरिने जस्तो शोषण कायमै पाइन्छ। यो विगतको हिन्दू नेपालको अवशेष हो भने मेची नदी पूर्व हेरेमा भविष्यको नेपाली समाजको प्रारूप देख्न सकिन्छ। नेपालमा *मुलुकी ऐन*का पण्डितहरू परम्परागत कर्मकाण्ड र चाकडीमा व्यस्त रहे भने सिक्किम र दार्जीलिङका नेपालीभाषीहरूले नेपाली इतिहास, साहित्य, कला र राजनीतिलाई परिभाषित गर्ने काममा मार्गदर्शन दिए। नेपाली राजनीतिमा तागाधारीहरूको एकाधिकार यथावत् छ भने *मुलुकी ऐन*बाट स्वतन्त्र सिक्किम र दार्जीलिङमा सबै जात/जातिहरू समानताका आधारमा खुला प्रतिस्पर्धा गर्दछन्।

## (ग) विविधताको अडान

अठारौँ शताब्दीको उत्तरार्द्धदेखि नेपालको राज्यशक्तिलाई सुदृढ र केन्द्रिकृत गर्नका लागि जनजातिको पहिचानलाई नामेट गर्दै हिन्दूकरणका आडमा शासन सञ्चालन गर्ने नीति अङ्गीकार गरियो। यस्तो धर्मसापेक्ष राज्यनीति शाहदेखि राणा शासनकालमा क्रमश: कट्टर हुँदै गयो। पहिलो प्रजातान्त्रिक दशक (1951-1960) राजनैतिक अशान्तिको बेला भएकाले सामाजिक मुद्दाहरू ओझेलमा परे। तथापि, यही अवधिमा भएको राष्ट्रिय जनगणना 1952/54 मा प्रथमपटक धर्म र भाषाका आधारमा तथ्याङ्क उजागर भयो। (नेपालमा जनगणना गर्ने चलन इ. 1911 देखि नै सुरु भएको भए तापनि सामाजिक/सांस्कृतिक पक्षलाई जनगणनामा बेवास्ता गरिन्थ्यो।) पञ्चायती शासनका बेला (1960-1990) एक विशिष्ट जातीय संस्कृतिमा अन्य समूहलाई विलीन गर्दै राष्ट्रिय एकता कायम गर्ने नीति अनुसरण गरिएको थियो। पर्वते 'उच्च' जातहरूको श्रेष्ठता कायम गर्नका लागि नेपाली भाषा र हिन्दू धर्मको आधिपत्य कायम गरियो। सन् 1990 मा प्रजातन्त्रको पुनर्स्थापना पछि बनेको नेपालको संविधानले राज्यलाई बहुजातीय र बहुभाषिक राष्ट्रका रूपमा त स्वीकार गर्‍यो तर 'हिन्दु अधिराज्यको' आवरण भने कायमै राख्यो। एक जना विश्लेषकले नेपालको सामाजिक स्वरूप निर्माणका चरणलाई (क) शाह तथा राणा शासनकालको साम्राज्यवादी स्वरूप, (ख) पञ्चायतकालको राष्ट्रवादी स्वरूप र (ग) सन् 1990 पछिको अल्पसङ्ख्यक जातजातिहरूको टालो-जोडाइ (patchwork) गरी तीन चरणमा विभाजन गरेका छन्।[6] प्रजातन्त्रमा बहुमतको कदर हुन्छ। त्यसैले जनसङ्ख्याको सङ्ख्यात्मक परिमाणको महत्त्व हुन्छ। सन् 1991 भन्दा अघिका राष्ट्रिय जनगणनामा जात/जातिका आधारमा तथ्याङ्क लिइएको थिएन। सन् 1991 को जनगणनाबाट प्राप्त जात/जाति, भाषा र धर्मसम्बन्धी तथ्याङ्कले के कुरा देखाएको छ भने दुई शताब्दीभन्दा बढी समयदेखि राज्य-व्यवस्थाले एउटा संस्कृति, एउटा धर्म र एउटा भाषालाई मात्र मान्यता दिँदै आए पनि नेपालको सांस्कृतिक विविधतालाई बिथोल्न सकेको छैन। सन् 1991 र 2001 को बीचको सामाजिक तथ्याङ्कले त आफ्नो जातीय पहिचान कायम गर्ने दिशामा जागरुकतासाथै सचेतता आएको देखाउँछ।

*जात/जाति*: सन् 1991 को जनगणनापछि जातजाति समूहहरूको सङ्ख्या दोब्बर भएको छ (तालिका 1)। सन् 2001 को जनगणनामा उल्लेख भएका नयाँ जात सबै तराईका छन्। तराईका झन्डै एकचौथाइ जनसङ्ख्या यिनै नयाँ जातका रहेका छन्। नयाँ पहिचान भएका जातिहरूचाहिँ पहाड तथा तराई दुवै प्रदेशका छन्। यी नयाँ जात/जातिका मानिसहरूको सङ्ख्या नेपालको कुल जनसङ्ख्याको 6 प्रतिशत हुन आउँछ। यसप्रकार, नेपालमा 57.5 प्रतिशत जात समूहका, 36.4 प्रतिशत जाति समूहका र 6.2 प्रतिशत अन्य समूहका छन्।[7]

[5] गुरुङ, 2001, पा. 197-198

[6] पाफ-चार्नेका, 1997

[7] गुरुङ, 2002 सी

कुल जनसङ्ख्यामध्ये पर्वते मूलका जात समूहहरू 38 प्रतिशत छन् भने पर्वते जातिका 26.6 प्रतिशत छन्। तराई मूलका जात समूहका मानिसहरू 19.5 प्रतिशत तथा जाति समूहका 7.9 प्रतिशत छन्।

**तालिका** 1: **जनसङ्ख्याको सामाजिक बनोट** 2001

| समूह | जात/जाति | | | जनसङ्ख्या | प्रतिशत | नयाँ समूहको मात्रा (%) |
|---|---|---|---|---|---|---|
| | 1991 | 2001 | वृद्धि | | | |
| क. जात | 31 | 53 | 22 | 13,070,480 | 57.5 | |
| 1. पर्वते | 9 | 9 | 0 | 8,638,797 | 38.0- | |
| 2. मधेसी | 22 | 44 | 22 | 4,431,683 | 19.5 | 24.6 |
| ख. जाति | 25 | 44 | 19 | 8,267,293 | 36.4 | |
| 3. हिमाली | 3 | 5 | 2 | 190,107 | 0.8 | 1.7 |
| 4. पर्वते | 11 | 20 | 9 | 6,038,530 | 26.6 | 2.8 |
| 5. भित्री मधेश | 7 | 7 | 0 | 251,117 | 1.1 | - |
| 6. मधेसी | 4 | 12 | 8 | 1,787,539 | 7.9 | 6.0 |
| ग. अन्य* | - | - | - | 1,399,161 | 6.2 | - |
| 7. कुल | 56 | 97 | 41 | 22,736,934 | 100.0 | 6.0 |

* चुरौटे, बङ्गाली, मुस्लिम र सिखसमेत

देशको वर्तमान जनसङ्ख्यालाई सामाजिक समूहको मूल थलोका आधारमा समेत हेर्न सकिन्छ। पहिलो हो, तिनीहरूको पर्वते र मधेसीबीचको अनुपात:

| *भौगोलिक क्षेत्र* | *जनसङ्ख्या (प्रतिशत)* |
|---|---|
| पर्वत (पहाड) | 65.4 |
| मधेश (भित्री मधेश, मधेश) | 32.8 |
| थलो नखुलेका | 1.8 |
| कुल | 100.0 |

कुल जनसङ्ख्यामध्ये रून्डै दुईतिहाइ पर्वते मूलका छन् भने एकतिहाइ मधेसी मूलका। हिमाल र भित्री मधेश मूलको जनसङ्ख्या अल्पसङ्ख्यामा रहेको छ र उनीहरू पाखा परेका छन्। नेपाल देशको उठान काठमाडौं उपत्यकाबाट भयो। यहाँका रैथाने नेवारहरूले अन्य प्रदेशका मानिसहरूलाई आफ्नै खालको



नामाकरण गरेका छन् : मंगोलई मूलकालाई सैं, ककेसई मूलकालाई खैं र मधेशकालाई मर्स्या भन्ने चलन छ। रोचक पक्ष के छ भने नेवारी संस्कृति आफैं चाहिँ सैं, सामाजिक जगमाथि मर्स्या मूलका शासकहरूले, खैं जात प्रथा थोपरेको मिश्रित उपज हो। नेवारहरूको वर्गीकरणअनुसार आजको नेपालको जनसङ्ख्या निम्नानुसार छ:

| *वर्गीकरण* | *प्रतिशत* |
|---|---|
| खैं (खस) | 38.0 |
| मर्स्या (मधेसी) | 33.0 |
| सैं (भोटे) | 22.0 |
| नेवा (नेवार) | 4.6 |
| नखुलेका समूह | 1.8 |
| जम्मा | 100.0 |

विभिन्न जातजातिको जनसङ्ख्यामा ठूलो अन्तर छ। कुसुण्डाको जनसङ्ख्या 164 मात्र छ भने सबैभन्दा बढी जनसङ्ख्या भएको छेत्री समूहमा 36 लाख (तालिका 2)। 10 लाखभन्दा बढी जनसङ्ख्या भएका छओटा समूहहरू छन् जसमध्ये चारओटा जनजाति समूहमा पर्दछन् (तालिका 2)। पाँच समूहहरूको जनसङ्ख्या 5 लाखदेखि 10 लाखबीचमा छ। दुई दर्जन समूहहरूको जनसङ्ख्या 10 हजारदेखि 50 हजारसम्म छ। अरू 22 ओटा समूहहरूको जनसङ्ख्या एक हजारदेखि 10 हजार छ। बीसओटा समूहहरूको जनसङ्ख्या 1 लाखदेखि 5 लाख छ। चारओटा समूह, सबै जातिको जनसङ्ख्या एक हजारभन्दा कम छ।

**तालिका** 2: **जात/जातिको जनसङ्ख्या वर्ग**, 2001

| जनसङ्ख्या | जात | जाति | अन्य | कुल |
|---|---|---|---|---|
| 1,000,000 भन्दा बढी | 2 | 4 | - | 6 |
| 500,000-1,000,000 | 2 | 2 | 1 | 5 |
| 100,000-500,000 | 17 | 3 | - | 20 |
| 50,000-100,000 | 10 | 6 | - | 16 |
| 10,000-50,000 | 13 | 11 | - | 24 |
| 1,000-10,000 | 6 | 13 | 3 | 22 |
| 1,000 भन्दा कम | - | 4 | - | 4 |
| जम्मा | 50 | ४३ | 4 | 97 |

*भाषा:* राष्ट्रिय जनगणना 1952/54 मा नेपालमा 53 ओटा भाषा/भाषिकाको गणना गरिएको थियो। पछिल्ला जनगणनाहरूमा नेपाली भाषाको प्रभुत्व देखाउनका लागि थोरै भाषा देखाइयो। सन् 1961 मा भाषाहरूको सङ्ख्या अघिल्लो दशकका 43 का तुलनामा घटेर 36 भएको देखाइयो भने 1971 को जनगणनामा यो सङ्ख्या 17 मात्र देखाइयो। सन् 1981 को जनगणनामा 18 ओटा भाषाको उल्लेख थियो। 1991 मा भाषा/भाषिकाको सङ्ख्या 31 भएकोमा 2001 मा यो सङ्ख्या बढेर 92 भएको छ। 2001 को जनगणनामा थप 22 ओटा राई, 17 ओटा जनजाति र 12 ओटा अन्य भाषा/भाषिका भएको लगत छ। यस्तो तथ्याङ्कबाट नेपाल साँच्चै नै अति धेरै भाषाभाषीको सङ्गमस्थल प्रमाणित भएको छ। 1991 र 2001 बीचको दशकमा भाषा परिवारका आधारमा जनसङ्ख्यामा घटीबढी भएको छ। तिब्बती-बर्मेली मातृभाषा भएको जनसङ्ख्या एकतिहाइ बढेको छ भने भारोपेली मातृभाषा भएको जनसङ्ख्या 21.6 प्रतिशतमात्र बढेको छ (तालिका 3)। नेपाली मातृभाषा भएको जनसङ्ख्या 18.8 प्रतिशतमात्र बढ्यो। परिणामस्वरूप नेपाली भाषा बोल्नेहरूको जनसङ्ख्या 1991 मा बहुमत (50.3) रहेकोमा सन् 2001 मा झरेर अल्पसङ्ख्या (48.6) मा हुन पुग्यो। अर्कोतिर, द्राबिडियन भाषा बोल्ने जनसङ्ख्या (झाँगड) 88.6 प्रतिशतले बढेको देखिन्छ र सो अप्रवासनका कारणले हुन सक्छ (तालिका 3)।

**तालिका 3: भाषा परिवारका आधारमा जनसङ्ख्या घटबढ**

(प्रतिशतमा)

| परिवार | 1991 | 2001 | परिवर्तन |
|---|---|---|---|
| १. भारोपेली | 80 | 79.1 | 21.6 |
| नेपाली | 50.3 | 48.6 | 18.8 |
| २. तिब्बती-बर्मेली | 17.0 | 18.4 | 33.4 |
| ३. मुण्डा | 0.2 | 0.2 | 20.8 |
| ४. द्राबिडियन | 0.1 | 0.1 | 88.6 |
| अन्य/नखुलेका | 2.8 | 2.2 | -2.8 |
| कुल | 100.0 | 100.0 | 23.0 |

भाषा जनसङ्ख्या परिवर्तनको महत्त्वपूर्ण पक्ष जनजाति समूहहरूमा आफ्नो मातृभाषा बोल्नेहरूको सङ्ख्यामा वृद्धि हो। सन् 1991 र 2001 का



जनगणनामा उपलब्ध जनजाति तथा मातृभाषाको जनसङ्ख्याको तथ्याङ्क तुलना गर्दा ती 19 समूहहरूमध्ये 4 समूहमा मात्र आफ्नो मातृभाषा बोल्नेको अनुपात घटेको छ। यस्ता समूहमा धिमाल, राई/किराँती, भोटे/सेर्पा र थकाली पर्छन् (तालिका 4)। सन् 2001 को जनगणनाअनुसार 8 ओटा जनजाति समूहमा आफ्नो मातृभाषा बोल्नेको अनुपात 70 प्रतिशतभन्दा बढी छ। जातीय जनसङ्ख्याभन्दा आफ्नो मातृभाषा बोल्ने सङ्ख्या बढी देखिएका राजवंशी र राजी अपवादका रूपमा देखिएका छन्। कुमालहरूमा साह्रै थोरैले मात्र आफ्नो मातृभाषा बोल्छन्।

**तालिका 4: आफ्नो मातृभाषा बोल्ने जनजातिको जनसङ्ख्या अनुपात**

(प्रतिशतमा)

| जनजाति समूह | 1991 | 2001 | जनजाति समूह | 1991 | 2001 |
|---|---|---|---|---|---|
| 1. राजवंशी | 104.1 | 135.2 | 11. चेपाङ | 68.5 | 70.5 |
| 2. राजी | 90.4 | 100.0 | 12. दरै | 60.0 | 68.5 |
| 3. लिम्बू | 64.0 | 92.9 | 13. नेवार | 66.2 | 66.3 |
| 4. जिरेल | 86.5 | 92.5 | 14. गुरुङ | 50.7 | 62.4 |
| 5. तामाङ | 88.8 | 92.0 | 15. दनुवार | 46.7 | 59.8 |
| 6. धिमाल* | 89.5 | 88.6 | 16. थकाली* | 51.8 | 49.6 |
| 7. थारू | 83.2 | 86.8 | 17. मगर | 32.1 | 47.7 |
| 8. धामी | 75.4 | 82.6 | 18. माझी | 20.6 | 30.1 |
| 9. राई/किराँती* | 83.6 | 75.3 | 19. कुमाल | 1.8 | 6.6 |
| 10. भोटे/सेर्पा* | 99.1 | 77.6 | | | |

*धर्म:* सन् 1952/54 को जनगणनामा हिन्दू, बौद्ध र इस्लाम तीन धार्मिक समूहलाई मात्र मान्यता दिएको थियो। सो गणनामा कुल जनसङ्ख्याको 88.9 प्रतिशत हिन्दू भएको तथ्याङ्क छ। सन् 1961 को जनगणनामा इसाई तथा जैन धर्म मान्नेहरूको तथ्याङ्क उल्लेख गरियो भने सन् 1991 को जनगणनामा किराँती र सिख धर्मावलम्बीको तथ्याङ्क उल्लेख छ। बहाई धर्मको उल्लेख सन् 2001 को जनगणनामा मात्र गरियो (तालिका 5)। सन् 1991-2001 का जनगणनामा धर्मका आधारमा जनसङ्ख्या केही घटबढ भएको छ। सन् 2001 मा जैन र सिख धर्मावलम्बीहरूको जनसङ्ख्या घटेको छ। राष्ट्रिय धर्मका रूपमा रहेको हिन्दू धर्म मान्नेको जनसङ्ख्या 14.6 प्रतिशतले मात्र वृद्धि भएको छ। यसको विपरीत इस्लाम धर्मावलम्बी 46 प्रतिशत, बौद्ध धर्मावलम्बीहरू

69.7 प्रतिशत, किराँतीहरू 157 प्रतिशत, इसाई धर्मावलम्बीहरू 226 प्रतिशतले बढेका छन्। इसाई धर्ममा नाटकीय वृद्धि हुनाको मूल कारण धर्म परिवर्तन हो। बौद्ध धर्मावलम्बी र किराँतीहरूले हिन्दू धर्म त्यागेर आफ्नो धर्म अँगालेकाले उनीहरूको जनसङ्ख्या अधिक वृद्धि भएको हो। यसको विपरीत सिख र जैन धर्मावलम्बीहरूले आफ्नो धर्म हिन्दू धर्म लेखाएकाले उनीहरूको सङ्ख्या घटेको हुन सक्छ। अरू पनि 5 लाखभन्दा बढी जनजातिहरूले हिन्दू लेखाएको देखिन्छ।

**तालिका 5: धर्मका आधारमा जनसङ्ख्या परिवर्तन**

(प्रतिशतमा)

| धर्म | जनगणनामा प्रथमपटक उल्लेख भएको मिति | 1991 | 2001 | परिवर्तन |
|---|---|---|---|---|
| 1. हिन्दू | 1952/54 | 86.5 | 80.6 | 14.6 |
| 2. बौद्ध | 1952/54 | 7.8 | 10.7 | 69.7 |
| 3. मुस्लिम | 1952/54 | 3.5 | 4.2 | 46.0 |
| 4. इसाई | 1961 | 0.2 | 0.5 | 226.0 |
| 5. जैन | 1961 | 0.0 | 0.0 | -45.7 |
| 6. किराँती (मुन्धुम) | 1991 | 1.7 | 3.6 | 157.0 |
| 7. सिख | 1991 | 0.1 | 0.0 | -36.6 |
| 8. बहाई | 2001 | - | 0.0 | - |
| अन्य/नखुलेको | | 0.0 | 0.4 | 402.7 |
| कुल | | 100.0 | 100.0 | 23.0 |

जात/जाति समूहहरूको जनसङ्ख्यामा भएको वृद्धि र परम्परागत धर्मका आधारमा उनीहरूको जनसङ्ख्या तुलना गर्ने हो भने जनजातिहरूमा सांस्कृतिक जागरुकता आएको स्पष्ट हुन्छ। सन् 1991 देखि 2001 को जनगणनामा जात समूहको जनसङ्ख्या 25.2 प्रतिशतले वृद्धि भएको छ (तालिका 6)। अर्कोतिर, आफूलाई हिन्दू धर्मावलम्बी दाबी गर्ने मानिसहरूको जनसङ्ख्यामा 14.6 प्रतिशतमात्र वृद्धि भएको छ। इस्लाम धर्मको जनसङ्ख्या 46 प्रतिशत बढेको छ भने सो सामाजिक समूह 49 प्रतिशतले बढेको छ। यसको विपरीत, परम्परागत रूपले बौद्ध धर्म मान्ने जनजाति समूहहरूको जनसङ्ख्या 24.9 प्रतिशले बढेको छ भने बौद्ध धर्मावलम्बीको जनसङ्ख्या 69.7 प्रतिशतले वृद्धि भएको छ। मौलिक किराँत धर्म जनाउने समूहहरूको जनसङ्ख्या वृद्धि अरू



बढी भएको छ। 1991 र 2001 का बीचमा किराँतीहरूको जनसङ्ख्यामा 28 प्रतिशत वृद्धि भएको छ भने किराँत (मुन्धुम) धर्मावलम्बीको जनसङ्ख्या 157 प्रतिशत बढेको छ। किराँतीलाई धर्मका रूपमा सर्वप्रथम सन् 1991 मा पहिचान गरिएको थियो। त्यस बेला किराँत धर्म मान्ने किराँती जनसङ्ख्यामध्ये 36 प्रतिशत रहेकोमा 2001 मा 73.9 प्रतिशत पुगेको छ। गत दशकको जनसङ्ख्या तथ्याङ्कले मानिसहरू जातियता, धर्म र भाषाका आधारमा आफ्नो पहिचान कायम गर्न सचेत भएको प्रस्ट देखिन्छ।

**तालिका 6: जात/जाति र धर्मका आधारमा जनसङ्ख्या परिवर्तन, सन् 1991-2001**

| | जात/जाति र वर्ग | सम्बन्धित जातजाति समूह | वृद्धि प्रतिशत |
|---|---|---|---|
| क. | जात | पहाड (9) मधेश 41 जातहरू | 25.2 |
| | हिन्दू | हिन्दू धर्मावलम्बी मान्ने | 14.6 |
| ख. | जाति | भोटे, व्याँसी, गुरुङ, हेल्मो, नेवार (60 प्रतिशत), सेर्पा, तामाङ, वालुङ | 24.9 |
| | बौद्ध | बौद्ध धर्मावलम्बी मान्ने | 69.7 |
| ग. | मुसलमान | मुस्लिम, चुरौटे | 49.0 |
| | इस्लाम | इस्लाम धमावलम्बी मान्ने | 46.0 |
| घ. | किराँती | लिम्बू, राई, सुनुवार, याखा | 28.1 |
| | (मुन्धुम) | मुन्धुम-परम्परा मान्ने | 157.0 |

## (घ) तीन जुधारु समूहहरू

राज्यको पक्षपाती एकाधिकारी नीतिका कारण मुख्य रूपले तीनओटा प्रमुख सामाजिक समूहहरू पाखा लगाइएका छन्। यिनीहरूमध्ये संस्कृतिका आधारमा जनजाति, जातका आधारमा दलित र भौगोलिक अवस्थितिका आधारमा मधेसी पर्दछन्। जातीय आन्दोलनको क्षेत्र पहिचान गर्न तथा भविष्यमा स्वायत्त शासनको क्षेत्रको नक्शाङ्कन गर्नका लागि यिनीहरूको जनसङ्ख्याको वितरणको ढाँचा पहिचान गर्नु जरुरी हुन्छ। तराई प्रदेश मधेसी आन्दोलनको केन्द्रबिन्दु भएको स्वाभाविक छ। त्यहाँ पहाडबाट बसाइँ सरेका करिब 30 लाखसमेत गरी एक करोडभन्दा बढी मानिसहरू बसोबास गर्दछन्। मुख्य रूपमा मधेसी

मूलका जनजाति र जात समूहहरू तराईमा केन्द्रित छन्। जनजाति र दलितहरूको वितरण हेर्दा जनजातिहरू पूर्वी भागमा अत्यधिक सङ्ख्यामा रहेको देखिन्छ भने दलितहरू पश्चिममा बढी पाइन्छ (तालिका 7)। पूर्व र उत्तरबाट आएका मंगोलई जनजाति समूहहरू नेपालको पूर्वी र उत्तरी भागमा बढी छन् भने दक्षिण र पश्चिमबाट बसाइँ सरेर आएका जात समूहहरू पश्चिम र दक्षिणमा बढी छन्। जनसङ्ख्या वितरणको यो ढाँचा उनीहरूको आगमन बिन्दुको ढाँचासँग मेल खान्छ। नेपालको पूर्वमा पर्ने भारतको अरुणाञ्चल प्रदेशमा अनुसूचित आदिवासी (जनजाति) को सङ्ख्या कुल जनसङ्ख्याको 63.7 छ। अर्कातिर नेपालको पश्चिममा पर्ने हिमाचल प्रदेशमा जनजातिको सङ्ख्या 4.2 प्रतिशतमात्र छ।[8] यसको ठीक विपरीत अरुणाञ्चलमा दलितको सङ्ख्या कुल जनसङ्ख्याको 0.5 प्रतिशतमात्रै छ भने हिमाचल प्रदेशमा उनीहरू 25.3 प्रतिशत छन्। यसैअनुसार नेपालमा पनि दलित र जनजातिहरूको अनुपात मधेशअनुसार फरक पाइन्छ। (नक्सा क र ख)

1991-2001 को दशकमा जनजातिको सङ्ख्या 64 लाखबाट वृद्धि भएर 84 लाख पुगेको छ। अर्थात् उनीहरूको सङ्ख्या 30.8 प्रतिशतले बढेको छ। यो वृद्धि देशको जनसङ्ख्या वृद्धिदर 23 प्रतिशतभन्दा बढी छ। जनजातिको कुल जनसङ्ख्यालाई हेर्ने हो भने पहाडी क्षेत्र तथा भित्री मधेशमा जनसङ्ख्याको अनुपात पश्चिमबाट पूर्वतिर बढी छ। पश्चिम हिमाली क्षेत्रमा जनजातिको अनुपात सबैभन्दा न्यून (3.8 प्रतिशत) रहेको छ भने मध्य हिमाली क्षेत्रमा यो अनुपात 93.2 प्रतिशत रहेको छ। 11 ओटा भौगोलिक क्षेत्रहरूमध्ये 5 ओटा क्षेत्रमा जनजातिहरूको बाहुल्यता छ (तालिका 7)।

सन् 1991 मा दलितहरूको जनसङ्ख्या 22 लाख भएकोमा यो सङ्ख्या वृद्धि भएर सन् 2001 मा 25 लाख भएको छ। यस अवधिमा उनीहरूको जनसङ्ख्या 13.8 प्रतिशतले मात्र बढेको छ। सबैभन्दा धेरै सङ्ख्यामा रहेका दलित जात कामीहरूको सङ्ख्या 7.1 प्रतिशतले घटेको छ र यसो भएको उनीहरूले जात परिवर्तन गरेकाले हो। दलित आन्दोलनकारीहरूले दलितहरूको सङ्ख्या धेरै बढी छ भन्ने दाबी गरे तापनि उनीहरू कुल जनसङ्ख्याको 13.6 प्रतिशतमात्र छन्। 1991 मा उनीहरूको सङ्ख्या कुल जनसङ्ख्याको 14.5 प्रतिशत थियो। चोखामेला[9] को निम्न भनाइले दलितहरूका दुई मूल समस्याहरूलाई स्पष्ट गर्दछः

[8] गुरुङ, 2002 ए, तालिका 2

[9] जेलिट, 1992



**तालिका** 7: **जनजाति र दलित जनसङ्ख्या वितरण**

| भौगोलिक प्रदेश (जिल्लाको सङ्ख्या) | जनजाति, 2001 | | दलित, 2001 | |
|---|---|---|---|---|
| | जम्माको प्रदेशगत % | प्रदेशको जनसङ्ख्यामा जनजाति अनुपात | जम्माको प्रदेशगत % | प्रदेशको जनसङ्ख्यामा दलित अनुपात |
| क *हिमाल* (15) | *5.2* | *31.4* | *5.2* | *11.6* |
| १. पश्चिम (8) | 0.3 | 3.8 | 3.6 | 16.3 |
| २. मध्य (3) | 0.6 | 93.2 | 0.1 | 4.3 |
| ३. पूर्व (4) | 4.2 | 58.2 | 1.4 | 7.2 |
| ख *पहाड (36)* | *48.1* | *47.7* | *46.2* | *16.0* |
| ४. पश्चिम (10) | 3.4 | 16.2 | 24.1 | 38.5 |
| ५. मध्य (13) | 17.9 | 44.1 | 16.0 | 14.9 |
| ६. काठमाडौं उपत्यका (3) | 10.9 | 56.0 | 0.9 | 2.1 |
| ७. पूर्व (10) | 15.8 | 59.3 | 5.3 | 7.1 |
| ग *भित्री मधेश (6)* | *12.4* | *47.9* | *7.4* | *11.5* |
| ८. पश्चिम (2) | 3.4 | 38.5 | 3.8 | 17.5 |
| ९. मध्य (2) | 5.1 | 49.3 | 1.7 | 6.8 |
| १०. पूर्व (2) | 3.9 | 58.8 | 1.8 | 10.9 |
| घ *मधेश (18)* | *34.3* | *28.0* | *41.3* | *13.9* |
| ११. पश्चिम (4) | 8.7 | 41.4 | 5.5 | 11.7 |
| १२. मध्य (3) | 6.1 | 29.6 | 8.4 | 16.9 |
| १३. पूर्व (18) | 19.4 | 24.7 | 27.3 | 13.6 |
| **नेपाल** (75) | 100.0 | 37.0 | 100.0 | 14.5 |

तिमीले मलाई यो जुनी दिनु थियो भने
किन मलाई यस्तो जुनीमा जन्म ?
तिमीले मलाई जन्मन त्याग्यौः तिमी अति निर्दयी भयौ।
तिमी कहाँ थियौ म जन्मने बेला ?
तिमीले कसलाई सघायौ त्यस बेला ?
चोखा* बिन्ती गर्छः हे प्रभु, हे केशव, मलाई नत्याग।

पहिलो, केशव प्रभु हिन्दू कृष्ण भगवान्को अर्को नाउँ हुनाले सो पुकाराबाट दलितहरू अति भाग्यवादी भएको देखाउँछ। तिनै देवताहरूका

* चोखोमेला एउटा भारतीय दलित व्यक्तिको नाउँ।

आशीर्वादका आधारमा ठूला जातको रजाइँ हुनाले यस्तो प्रार्थना व्यर्थ छ। दोस्रो, उक्त बिन्ती उद्धृत गरिएको पुस्तकको शीर्षक नै *अछूतबाट दलित* भन्ने रहेको छ। अर्थात्, 'अछूत' शब्द होच्याउने तथा गैरकानुनी हुनाले तटस्थ तर शोषित जनाउने 'दलित' शब्दबाट पदस्थापना भएको छ।

सन् 1991 को जनगणनाअनुसार कुल दलितको जनसङ्ख्या पहाडमा 46.2 प्रतिशत, 41.3 प्रतिशत तराईमा, 7.4 प्रतिशत भित्री मधेशमा र 5.2 प्रतिशत हिमाली भेगमा छन्। प्रादेशिक वितरणका हिसाबले पश्चिममा दलितहरूको जनसङ्ख्याको अनुपातमा सबैभन्दा बढी देखिन्छ (तालिका 7)। पश्चिम हिमाली क्षेत्र र पश्चिम भित्री मधेशमा उनीहरू कुल जनसङ्ख्याको 16 प्रतिशत छन् भने पश्चिम पहाडमा उनीहरू कुल जनसङ्ख्याको सबैभन्दा बढी 38.5 प्रतिशत छन्। पूर्वी हिमाल र पहाड भेगमा उनीहरू 7.5 प्रतिशतभन्दा कम छन् भने काठमाडौं उपत्यकामा नेवार दलितहरू नगनिएकाले २.१ प्रतिशतमात्र छन्।

जनजाति, दलित र मधेसी समूहहरू ठूला जातहरूबाट शासित रहँदै आएका छन्। तर उनीहरूबीच नै जातीय औ क्षेत्रीय विभेदको निरन्तरताको कारण उनीहरूको आन्दोलनमा अऊ तालमेल हुन सकेको छैन। नेपाल जनजाति महासङ्घमा 48 जनजाति समूहहरू आबद्ध भए पनि तीमध्ये पहाड र मधेशका जनजातिको समस्यामा धेरै भिन्नता छ। दलितहरूका हकमा पनि यही कुरा लागू हुन्छ। पहाडे दलितहरूको भाषा र संस्कृति सत्ताधारीवर्गसँग मिल्छ। मधेसी मूलका सम्बन्धमा, त्यहाँका जात/जातिबीच अन्तरका साथै भाषा, धर्म र सांस्कृतिक विभेद तगारो रहेको छ। यस्ता अनमेल पाटाहरूका बाबजुद राज्यद्वारा पाखा लगाइएका समूहका नाताले तिनीहरूबीच धेरै विषयमा सामूहिक स्वार्थ रहेको पाइन्छ। उनीहरूले उठाइआएका साझा विषयहरू हुन्– राजनैतिक स्वायत्तता, सामाजिक समानता र आर्थिक अवसर। सहभागिता प्रजातन्त्रको माथिका प्रभाव मुद्दाहरू लिएर एकीकृत पहलकदमी गरिएमा ती तीन उपेक्षित समूहहरू एउटा सबल शक्तिका रूपमा स्थापित हुनेछन्।

## वर्चस्वका लागि सङ्घर्ष

इतिहास भनेको जहिल्यै पनि विजेताहरूको गाथा हो र हरुवाहरूसित दुःखद स्मरणमात्र रहन्छ। आधुनिक नेपालको इतिहास पनि शासकहरू र उनीहरूको वैधताको कथा हो। विस्तारित नेपालको स्थापना सीमा विस्तार, आक्रमक



कब्जा, चतुऱ्याइ र कूटनीतिका आधारमा भएको थियो। इतिहासलाई कोट्टयाउने हो भने विभिन्न जनजाति समूहहरूको विरोध, संघर्ष र विद्रोहका कैयन घटनाहरू भेटिन्छन्।[10] संयोगवश, कीर्तिपुरका नेवारहरूको बहादुरीपूर्ण प्रतिरोधलाई एक जना विदेशी प्रत्यक्षदर्शीले उल्लेख गरेको पाइन्छ। जनजातिहरूले सञ्चालन गरेका अन्य सङ्घर्षहरू लिपिबद्ध नहुनाले लोकसंस्मरणमा भर पर्ने बाध्यता छ। केही थोरैमात्र सम्झनाका आधारमा ब्युँत्याउन सकिन्छ। अठारौं शताब्दीको अन्त्यतिर लिम्बू र तामाङ विद्रोह भएको थियो (तालिका 8)। जङ्गबहादुरको शासनकालमा गण्डकी प्रदेशका गुरुङ र मगरका साथै पूर्वी पहाडका राई र लिम्बूहरूले विद्रोह गरेका थिए। बीसौं शताब्दीको पूर्वार्द्धमा बुद्धको जन्मभूमि नेपालमा बौद्ध भिक्षुहरूलाई लक्षित गरेर धार्मिक दमन गरिएको थियो। राणा शासनको विरुद्धमा सन् 1950/51 सञ्चालन गरिएको राजनीतिक आन्दोलनमा किराँत र तामाङहरूले पनि आफ्नो अधिकारका लागि विद्रोह गरेका थिए। लिम्बूहरूको भूमिमाथिको परम्परागत अधिकारको अन्त्य गर्दै सन् 1964 मा

**तालिका 8: जनजातीय/सांस्कृतिक घटनाहरू**

| वर्ष | घटना | क्षेत्र |
|---|---|---|
| 1770 | लिम्बू विद्रोह र निष्कासन | अरुण पूर्व |
| 1778 | लिम्बू भाषाको दमन | अरुण पूर्व |
| 1793 | मुर्मी (तामाङ) विद्रोह | नुवाकोट |
| 1808 | खम्बू (राई) विद्रोह | भोजपुर |
| 1858 | गुरुङ (सुकदेव) विद्रोह | लमजुङ |
| 1867 | दसैं बहिष्कार (दुई राईलाई मृत्युदण्ड) | धनकुटा |
| 1870 | लिम्बू भाषाको दमन | अरुण पूर्व |
| 1875 | मगर (लखन) विद्रोह | गोर्खा |
| 1876 | गुरुङ (सुपति) विद्रोह | गोर्खा |
| 1925 | छिरिङ नोर्बु लामा र चार लामालाई देश निकाला | पाटन |
| 1937 | भिक्षुहरूलाई देश निकाला (अमृतानन्दसहित) | काठमाडौं |
| 1950 | किराँती विद्रोह | पूर्व पहाड |
| 1951 | तामाङ (किसान) विद्रोह | नुवाकोट |
| 1964 | किराँतद्वारा किपट उन्मूलनको विरोध | पूर्व पहाड |

स्रोत: हर्क गुरुङ, 'राष्ट्रियता र जनजाति', मेरी डेसेन (स.) *नेपालका सन्दर्भमा सामाजिक-आर्थिक-राजनैतिक अवधारणहरू,* हिमाल किताब, २००३।

[10] भट्टचन, 2000, पा. 140

किपट प्रथा खारेज भएपछि पूर्वी पहाडमा तीव्र विरोधको लहर चल्यो।

नेपालको राजकीय धर्म अझै पनि मानिस जन्मका आधारमा उचनीच हुने हिन्दू मान्यताको जात प्रथामा आधारित छ। नेपाललाई 'हिन्दू राज्य' भनी गरिएको घोषणा गैरहिन्दू जनजाति र हिन्दू दलितहरूलाई उपेक्षाको मूल स्रोत हो किनभने यस्तो अवधारणाले जनजाति र दलितलाई सीमान्त पार्दछ। त्यसैकारण जनजातिहरू सांस्कृतिक आधारमा विभेद गरिएका छन् भने दलितहरू संस्कारका आधारमा अपहेलित छन्। यस्तो कृत्रिम विभेद 1990 को नेपालको संविधानको धारा 11 (3) मा उल्लेखित समानताको हकको विपरीत छ। नेपालको संविधानमा केही यस्ता धाराहरू छन् जुन भाषागत समानताका विरुद्ध छन्। धारा 6 (2) मा 'देवनागरी लिपिमा लेखिएको नेपाली भाषा राष्ट्रभाषा हुनेछ र सरकारी भाषा हुनेछ' भनिएको छ। नेपालमा बोलिने अरू भाषाहरूलाई 'नेपालको राष्ट्रिय भाषा' का रूपमा उल्लेख गरिएको छ र सरकारी कामकाजका लागि निषेध गरिएको छ। मैथिली तथा नेवारी भाषालाई सन् 1998 मा स्थानीय सरकारी कामकाजको लागि प्रयोग गर्न प्रयास गर्दा सर्वोच्च अदालतले यसलाई अवैधानिक घोषणा गऱ्यो।[11] धारा 18 (2) ले जनजातिका मातृभाषामा प्राथमिक तहसम्म मात्र शिक्षा दिन पाउने कुरा तोकेको छ। अर्कातिर, कुनै पनि नेपालीको मातृभाषा नभएको संस्कृत भाषालाई भने राज्यले सबै तहको शिक्षामा भरण-पोषण गरिरहेको छ।

यस्तो धार्मिक र भाषिक एकाधिकारका कारण सरकारी जागिर र शक्ति संरचनामा उच्च जातका हिन्दूहरूको हालीमुहाली रहिआएको छ। जातगत श्रेष्ठता तथा साक्षरता र आर्थिक समृद्धिका बीचमा सहसम्बन्ध छ भन्ने कुरा उपलब्ध तथ्याङ्कहरूले पुष्टि गर्दछन्।[12] अथवा, जातस्तर जति न्यून हुन्छ निरक्षरता र गरिबी त्यति नै बढी हुन्छ। उच्च जात समूहमा प्रौढ साक्षरता दर 42 देखि 58 प्रतिशत रहेको छ (तालिका 9)। सो दर पर्वते जनजातिहरूमा 35.2 प्रतिशत र दलितवर्गमा 23.8 प्रतिशत छ। 1991 को जनगणनाअनुसार उच्च शिक्षा प्राप्त गर्ने मानिसहरूमध्ये 88.8 प्रतिशत उच्च जातका, 6.2 प्रतिशत जनजाति समूहका र 3.1 प्रतिशत दलितहरू थिए। साक्षरता तथा शिक्षाको स्तर उच्च भएका सामाजिक समूहको प्रतिव्यक्ति आय पनि अरूभन्दा बढी छ। उच्च जात बाहुन र छेत्रीको प्रतिव्यक्ति आय राष्ट्रिय सरदर रु.

[11] महर्जन, 2000

[12] गुरुङ, 2003 ए, तालिका 6



7,673 भन्दा बढी छ। पहाडे जनजातिहरूको प्रतिव्यक्ति आय रु 6,603 छ भने दलितहरूको रु. 4,940 मात्र रहेको छ। यसै गरी सामाजिक स्तर तल भएका समूह गरिबीको रेखामुनि बढिरहेको कुरा पनि तथ्याङ्कले देखाएका छन्। सरकारी तथ्याङ्कले नेपालका 42.6 प्रतिशत परिवार गरिबीको रेखामुनि रहेको देखाएको छ। सहरी क्षेत्रमा केन्द्रित नेवारमा 25 प्रतिशत परिवारमात्र गरिबीको रेखामुनि रहेका छन्। उच्च जातकाहरूमा 34 देखि 50 प्रतिशत परिवार गरिबीको रेखामुनि रहेका छन् भने पहाडे मूलका जनजातिमा गरिबीको रेखामुनि हुने परिवारको मात्रा 45 देखि 71 प्रतिशत छ। दलित जातका 65 देखि 68 प्रतिशत परिवार गरिबीको रेखामुनि पर्दछ।

**तालिका** 9: **साक्षरता र आय,** 1996

| सामाजिक समूह | साक्षरता दर (प्रतिशत) | प्रतिव्यक्ति आय (रु.मा) |
|---|---|---|
| **क जात समूह** | | |
| पर्वते बाहुन | 58.0 | 9,921 |
| पर्वते छेत्री | 42.0 | 7,744 |
| मधेसी जात | 27.5 | 6,911 |
| दलित जात | 23.8 | 4,940 |
| **ख भाषा समूह** | | |
| नेवार | 54.8 | 11,953 |
| **ग पहाडी जाति** | | |
| गुरुङ, लिम्बू, मगर, राई, सेर्पा | 35.2 | 6,603 |
| **घ धार्मिक समूह** | | |
| मुसलमान | 22.1 | 6,336 |
| **ङ अन्य** | 27.6 | 7,312 |
| नेपाल | 36.7 | 7,673 |

स्रोत: CBS, 1996; विश्व ब्याङ्क, 1997 ए
NESAC बाट लिइएको, *नेपाल: मानव विकास प्रतिवेदन, 1998,* एनेक्स 7

शिक्षा र साधनमाथि उच्च जातको एकाधिकार भएकाले प्रशासन र राजनीतिमा पनि उनीहरूकै पकड बलियो रहेको छ। सत्ताधारीहरूको सामाजिक संरचनामा सन् 1854 देखियता खास परिवर्तन भएको छैन (तालिका 10)।

यसको उल्टो, निजामती सेवामा उच्च जातिको एकाधिकार अरू बढ्दै गएको देखिन्छ। आर्थिक वर्ष 1996/97 देखि 1997/98 मा अधिकृतको पदमा निवेदन दिनेहरूमा 82.9 प्रतिशत बाहुन-छेत्री थिए भने पर्वते मूलका जनजातिहरू 3.7 प्रतिशतमात्र थिए। अधिकृत पदमा सफल हुनेहरूमा 83.1 प्रतिशत बाहुन-छेत्री थिए भने 3.4 प्रतिशत जनजातिहरू थिए।[13] यस्तो असन्तुलन निजामती सेवाको हालको प्रवृत्तिले अरू स्पष्ट पार्छ। सन् 1983/84 मा सरकारी पदमा अधिकृत हुनेहरूमा 69.3 प्रतिशत उच्च जातका थिए भने 3.0 प्रतिशत जनजाति थिए। तर, सन् 2000/2001 मा अधिकृत पदमा छानिएका व्यक्तिहरूमा 87.0 प्रतिशत उच्च जातका र 0.5 प्रतिशत जनजातिका थिए। यसप्रकार जनजाति समूह र दलितहरू शासनसत्तामा सहभागी हुनबाट वञ्चित छन्।

**तालिका** 10: **सत्ताधारी वर्गको संरचना**

| सामाजिक समूह | 1854[क] | | १९९९[ख] | |
|---|---|---|---|---|
| | सङ्ख्या | प्रतिशत | सङ्ख्या | प्रतिशत |
| 1. उच्च जात (पर्वते) | 166 | 78.3 | 763 | 66.2 |
| 2. उच्च जात (नेवार) | 32 | 15.9 | 152 | 13.1 |
| 3. उच्च जात (मधेश) | 2 | 0.9 | 138 | 11.9 |
| 4. जाति | 6 | 2.8 | 97 | 8.4 |
| 5. दलित जात | - | - | 2 | 0.3 |
| 6. अन्य (जात नखुलेको) | 6 | 2.8 | - | - |
| कुल | 212 | 100.0 | 1,158 | 100.0 |

क. 22 डिसेम्बर 1854 को *मुलुकी ऐन*अनुसार
ख. गोविन्द न्यौपाने, 2000, पेज 82

राजनीतिक व्यवस्थामा परिवर्तन हुनेबित्तिकै सामाजिक मान्यता फेरिन्छ भन्ने छैन। नेपालमा 1990 मा पुन:स्थापित प्रजातान्त्रिक राजनैतिक व्यवस्था परम्परागत सामन्ती धारणाबाट जकडिएको छ। हाल देशमा देखा परेको जनजाति आन्दोलन स्थापित प्रभुत्ववादी ढाँचाका विरुद्ध लक्षित छ। यस्ता आन्दोलनले भाषा, धर्म, जातीय र क्षेत्रीय विभेदविरुद्ध अभियानलाई सङ्गठित गरिरहेको छ। तर सत्ताधारीवर्गहरू पुरानै सामाजिक संरचनामा अडिग छन्। नेपालको

[13] गुरुङ, 2002 बी, पा. 4



संविधान 1990 ले पूर्ण व्यक्तिगत स्वतन्त्रता प्रदान गर्दागर्दै पनि राज्यलाई 'हिन्दू अधिराज्य' घोषणा गर्नु विगतको प्रभुत्ववादी प्रवृत्तिलाई निरन्तरता दिन खोज्नु हो। अरू भन्ने हो भने, संस्कृत भाषालाई माध्यमिक स्कुलमा अनिवार्य गराउने काङ्ग्रेस सरकारको निर्णय र संस्कृत भाषामा समाचार प्रसारण गर्ने कम्युनिस्ट सरकारको निर्णयले नेपालमा नयाँ ब्राह्मणवादको उदय भएको कुराको पुष्टि गर्दछ। राजनैतिक दलहरूमा उच्च जातिको पकडले गर्दा यसो भएको हो। संविधानको निर्देशक सिद्धान्तको धारा 27 (10) मा उपेक्षितवर्गलाई समावेश गर्ने उद्देश्यले राखिएका आरक्षणका प्रावधानलाई सबै दलले स्वीकार गरेका भए पनि सरकारमा बसेका बेला कुनै पनि दलले ती प्रावधान कार्यान्वयनमा ल्याएनन्। 1990 सालदेखि सबैभन्दा लामो समयसम्म सरकारमा बसेको नेपाली काङ्ग्रेसले सामाजिक समानताका बारेमा सबैभन्दा पुरातनवादी धारणा राखेको पाइन्छ (तालिका 11)। यस सम्बन्धमा वामपन्थी पार्टीहरू जति प्रगतिशील देखिए तापनि उनीहरूमध्ये नेकपा (एमाले) मात्र त्यो पनि थोरै समयका लागि सत्तामा रह्यो। त्यसैले उनीहरूका भनाइ घोषणापत्रमा मात्र सीमित रहेका छन्।

**तालिका** 11: **जनजाति सबाल तथा दलगत धारणा**

| सबाल | नेका | राप्रपा | सद्भावना | एमाले | माले | माओवादी |
|---|---|---|---|---|---|---|
| 1. धर्मनिरपेक्ष राष्ट्र | | | | Ö | Ö | Ö |
| 2. भाषिक अधिकार | | Ö | Ö | Ö | Ö | |
| 3. आरक्षण | Ö | Ö | Ö | Ö | Ö | Ö |
| 4. जातीय सभा | | Ö | | Ö | Ö | Ö |
| 5. स्वायत्तता | | | क्षेत्रीय | | | जातीय /क्षेत्रीय |
| 6. आत्मनिर्णयको अधिकार | | | | | | Ö |

स्रोत: हर्क गुरुङ, 'राष्ट्रियता र जनजाति', मेरी डेसेन (स.) *नेपालको सन्दर्भमा सामाजिक-आर्थिक-राजनैतिक अवधारणहरू,* हिमाल किताब, 2003।

नेकपा (माओवादी) ले पीडितवर्गका रूपमा रहेका जनजाति र दलितहरूलाई फकाउनुका पछाडि उसको निहित स्वार्थ छ।[14] उनीहरूले जनजाति र दलितहरू

[14] गुरुङ, 2003 बी, पा. 11

गरिब भएकाले धेरै जातीय र क्षेत्रीय मुक्ति मोर्चाहरूलाई परिचालन गरेका छन्। जातीय मुक्ति मोर्चाहरूमा किराँत, मगरात, नेवार तामसालिङ, तमुवान, दलित आदि पर्छन् भने क्षेत्रीय मुक्ति मोर्चाहरू सेती-महाकाली, भेरी-कर्णाली र मधेश हुन्। माओवादी आन्दोलनले जनजाति र दलितहरूलाई राजनैतिक प्रक्रियामा उल्लेखनीय सहभागिताको अवसर प्रदान गरेको छ।

## (च) बैठान

राष्ट्रिय एकीकरण भनेको आज्ञापालन र एकरुपतामात्र होइन, यसले एउटा सिङ्गो राष्ट्रप्रतिको निष्ठा र एकता दर्शाउँछ। त्यसैले राष्ट्रनिर्माणसम्बन्धी दूरदर्शी लक्ष्य राष्ट्रियताबारे राजनैतिक अवधारणा बहसमा आधारभूत (primordialist) र कार्किय (intrumentalist) वैचारिक धारमा ठूलो अन्तर देखिन्छ।[15] पहिलो पक्ष, जसलाई सारतत्वि (essentialist) पनि भनिन्छ, का अनुसार जातीय पहिचान र यसका परिचायक प्रवृत्ति धेरै समय अडिग रहन्छ। दोस्रो पक्ष, जसलाई आधुनिकता (modernism) पनि भनिन्छ, का अनुसार जातीय पहिचान अगुवाहरूबाट आर्थिक वा राजनैतिक अवसरका लागि सृजित गरिएको हुन्छ। यी दुई धारणाबीच एकदम स्पष्ट लक्ष्मणरेखा हुनुपर्छ भन्ने आवश्यक छैन। जातीय पहिचान वा वर्चस्व राजनैतिक स्वार्थबिना पनि कायम रहन सक्छ; समूहको एकता अथवा साङ्केतिक जमातका लागि।[16] जातियता र राष्ट्रियताबारेको अध्ययन राजनैतिक रूपले अभिप्रेरित सांस्कृतिक परिवर्तनसँग सम्बन्धित हुनाले, ती प्रतीकहरू प्राचीन हुन् वा आधुनिक भन्ने कुरा गौण हो। वस्तुत: यस्तो सोचाइ 'जनजाति समूहभित्रका विशिष्ट र विरोधीहरूले समूहको सांस्कृतिक दृष्टिकोण पहिचान गर्ने, त्यसमा नयाँ मूल्य र अर्थ जोड्ने, आफ्नो स्वार्थ रक्षा गर्ने र अरू समूहसँग प्रतिस्पर्धा गर्ने कामका लागि तिनीहरूलाई प्रतीकको रूपमा प्रयोग गर्ने तथा समूहलाई परिचालन गर्ने तरिकाका बारेमा राखिन्छ।[17]

तर जनजातिको पहिचानभन्दा व्यापक राष्ट्रनिर्माणको कुरा हेर्ने हो भने कार्किय धारणाले विशेष महत्त्व राख्दछ। राष्ट्रनिर्माणका लागि अस्तित्वहरूका विभिन्न तह परिचालनमा विशेष ध्यान दिनुपर्दछ जसका लागि राज्यले

[15] गेलनर, 1977

[16] ओमेन, 1994

[17] ब्रास, 1991, पा. 75



महत्त्वपूर्ण भूमिका खेल्न सक्दछ। 'व्यक्तिमा राष्ट्रियताको भावना जगाउन यो आवश्यक छ कि राष्ट्रको अतितका बारेमा निर्मित कथा सामान्य रूपमा विश्वास गर्ने खालको हुनुपर्छ, ऐतिहासिक रूपले साँचो नभए पनि।[18] राष्ट्रनिर्माणका लागि परस्पर विरोधी समूहहरूबीचको द्वन्द्व व्यवस्थापन पनि आवश्यक हुन्छ, जुन निरङ्कुश व्यवस्थामा विरोधी समूहको दमन तथा प्रजातान्त्रिक व्यवस्थामा वार्ताद्वारा सल्टाइन्छ। नेपालमा जातीय भावना नौलो अनुभूति होइन, सुषुप्त रहेको भावनाको अभिव्यक्ति भएको हो। शाह तथा राणा शासनमा दमन गरिएका तथा पञ्चायती शासनमा दबाइएका जातीय पहिचानले अहिलेको अनेकतामुखी नीति लिएको प्रजातान्त्रिक पद्धतिमा प्रस्ट दबाबको रूप लिएको छ। यसो हुनमा परिवर्तित राजनैतिक परिस्थिति नै निर्णायक कारक हो।

अहिलेको नेपालमा देखा परेका सामाजिक सजीवता अघिका शासनकालमा भएका दमनहरूको परिणति हो। अहिले भाषा, जातियता, धर्म र क्षेत्रीय निष्ठामा आधारित आन्दोलनकारी समूहहरूले एकाधिकारवादी सामाजिक संरचनामाथि प्रश्न उठाएका छन्। उपेक्षित सामाजिक समूहका मागप्रति ध्यान नदिई नहुने तीन मुख्य युक्तिसङ्गत कारणहरू छन्। पहिलो, उपेक्षित रहनु जनजाति र दलितहरूको मात्रै समस्या होइन। यो एउटा राष्ट्रिय समस्या हो किनभने कुल जनसङ्ख्याको आधा भाग ओगट्ने यिनलाई नसमेट्दा, राज्यको अन्तर्निहित शक्तिमा क्षय हुन्छ। दोस्रो, जन्मजात सामाजिक असमानता कायम राखेर प्रजातान्त्रिक मूल्यमान्यता र मौलिक अधिकारको सम्मानको आशा गर्नु व्यर्थ हो। तेस्रो, विकासलाई यस्ता उपेक्षितवर्गतर्फ लक्षित गर्दा, गरिबी निवारणलाई प्रत्यक्ष सघाउ पुग्दछ किनभने उपेक्षितहरू अधिकांश गरिब छन्।

उपेक्षितवर्गको उत्थानका उपायहरू उनीहरूको समस्याअनुसार फरकफरक हुन सक्छ (तालिका 12)। जनजातिले भोगेका समस्या भनेका धार्मिक र भाषिक असमानता, गौण राजनैतिक प्रतिनिधित्व र स्वायत्तता अभाव हुन् भने दलितहरूको समस्या सामाजिक शोषण र आर्थिक दरिद्रता हो। यस्तै, मधेसीहरूले पर्वते दमन, भाषिक अवहेलना र नागरिकता समस्या भोगिरहेका छन्। सरकारद्वारा सञ्चालित कार्यक्रमहरूले समस्याहरूको संरचनात्मक समाधान नगरेकाले अहिलेसम्मका ती प्रयत्नहरूको प्रभाव गौण रहेको छ। यस्ता समाधानहरूमध्ये केही सामाजिक समानताबारे संविधानमा व्यवस्था, सांस्कृतिक

[18] तामिर, 1995

**तालिका** 12: **समस्या सुधारका पक्षहरू**

| सामाजिक समूह | समस्याहरू | सुधारहरू |
| --- | --- | --- |
| जनजाति | *सांस्कृतिक*<br>1. धार्मिक विभेद<br>2. भाषिक विभेद | 1. धर्मनिरपेक्ष राष्ट्र<br>2. जनजातिका भाषाहरूलाई सरकारी भाषाको मान्यता |
| | *आर्थिक*<br>3. कम साक्षरता<br>4. बेरोजगारी | 3. शिक्षामा प्राथमिकता<br>4. आरक्षण |
| | *राजनैतिक*<br>5. कम प्रतिनिधित्व<br>6. हैकमवादी शासन | 5. समानुपातिक प्रतिनिधित्व<br>6. जातीय स्वायत्तता |
| मधेसी | *सांस्कृतिक*<br>1. भाषिक विभेद | 1. तराईका भाषाहरूलाई सरकारी मान्यता |
| | *आर्थिक*<br>2. जागिरमा पक्षपात<br>*राजनैतिक*<br>3. पर्वतेको वर्चस्व<br>4. नागरिकता समस्या | 2. सेनामा भर्ना<br>3. क्षेत्रीय स्वायत्तता<br>4. रैथाने र आप्रवासीको पहिचान |
| दलित | *सामाजिक*<br>1. जातीय विभेद<br>*आर्थिक*<br>2. न्यून साक्षरता<br>3. बेरोजगारी<br>4. सुकुम्बासी | 1. धर्मनिरपेक्ष राज्य<br>2. नि:शुल्क शिक्षा<br>3. आरक्षणको व्यवस्था<br>4. वैकल्पिक जीविकोपार्जनका उपाय |
| | *राजनैतिक*<br>5. गौण प्रतिनिधित्व | 5. जातगत निर्वाचन |



अनेकता र सकारात्मक विभेद पर्दछन्। संविधान संशोधन गरेर देशलाई धर्मनिरपेक्ष राष्ट्र बनाएमा जनजातिहरूमाथिको सांस्कृतिक प्रभुत्व र दलितमाथिको विभेदको समस्या समाधान हुनेछ। अन्य भाषालाई पनि सरकारी भाषाको मान्यता दिएमा माध्यम भाषाका रूपमा स्थापित नेपाली भाषाको व्यापकतामा खतरा देखिन्न। यहाँनेर जाएम तोरे बोदेको भनाइ उल्लेखनीय छ, 'जबसम्म देशका केही मानिसहरू शिक्षा आर्जन गर्ने सबै प्राविधिक सुविधाहरू उपभोग गर्दछन् तर अधिकांशले अक्षरसमेत चिन्ने अवसर पाएका हुँदैनन्, त्यस देशमा सामाजिक शान्ति भनेको फगत मृगतृष्णा हो।'[19] बेरोगजारीको समस्या समाधानका लागि पिछडिएका समुदायहरूलाई सार्वजनिक क्षेत्रमा आरक्षणको व्यवस्था हुनुपर्छ। राजनैतिक क्षेत्रमा जनजातिको समानुपातिक प्रतिनिधित्वको आवश्यकता छ भने दलितहरूलाई उनीहरूमध्येबाट निर्वाचित गराउन सकिन्छ अहिले जस्तो मनोनयनबाट होइन। क्षेत्रीय स्वायत्तताले प्रदेशअनुसार बहुसङ्ख्यामा रहेका मधेसी तथा जनजातिका स्थानीय आवश्यकता पुर्ति गर्न सजिलो बनाउँछ।

कुनै वर्ग वा समूह संविधानले प्रत्याभूति गरेको अधिकार उपयोग गर्न सक्ने नभएसम्म त्यस्ता अधिकार कागतमा मात्र सीमित रहन्छन्। शिक्षा र निजामती क्षेत्रमा उच्च जातको एकाधिकार रहेको अवस्थामा प्रतिस्पर्धामा आउन नसक्ने दलित र जनजातिका लागि अवसरको समानताको कुनै अर्थ रहँदैन। उनीहरूलाई क्षमता अभिवृद्धि गर्नका लागि शिक्षा र आर्थिक अवसरका लागि सकारात्मक विभेदको नीति चाहिएको छ। साक्षरता दरले शैक्षिक कार्यक्रमका लागि लक्षित समूह पहिचान गर्न ठोस आधार उपलब्ध गराउँछ। रोजगारीका लागि उपेक्षित समूहहरूलाई आरक्षणका साथै सीप अभिवृद्धि गर्ने र भूमिहीनहरूलाई जग्गा दिने कार्यक्रम हुनुपर्दछ।

राजनैतिक अभिव्यक्तिहरू जातीय हुन् वा अन्य, सत्ता-सङ्क्रान्तिका बेला ज्यादै सक्रिय हुन्छन्। प्रजातान्त्रिक वातावरणमा अहिलेको नेपालले ठीक यही कुराको अनुभव गरिरहेको छ। अहिलेसम्म उठाइएका जातीय तथा क्षेत्रियतासम्बन्धी मागहरूमा प्रचलित व्यवस्थाअन्तर्गत साधनको उपयोग गर्न पाउने वातावरण भद्र खालका मात्र छन्। विगतका तीनओटा आमचुनावले पनि जनताले मूलधारको राजनीतिलाई समर्थन जनाएको कुरा देखाएको छ। तर शासकवर्गले सामाजिक न्याय र राजनैतिक समानताका लागि उपेक्षित समूहहरूले उठाएका

[19] टाउनसेन्ड, 1972, पा. 97

वैधानिक मागहरूलाई पूरा नगर्ने हो भने उनीहरू आक्रमक र अरु विद्रोहात्मक पनि हुन सक्छन् र आत्मनिर्णयको अधिकारको नारा उठ्ने सम्भावना पनि हुन्छ। नेपालले अहिले अनेकतामा आधारित राष्ट्रियताको अवधारणा अगाडि सार्नु परेको छ जसले राष्ट्रिय एकता अभिवृद्धि गर्दछ।

मैले यस लेखको थालनी अफ्रिकी नेता नेल्सन मण्डेलाको भनाइबाट गरेको थिएँ। अब यसको अन्त्यचाहिँ एक जना नामुद ल्याटिन-अमेरिकी साहित्यकारको भनाइबाट गर्छु:[20]

> विरोधाभासको स्थिति यस्तो छ: एकातिर आर्थिक विवेकले हामीलाई आउँदो शताब्दी विश्वअर्थतन्त्रको एकीकरणको युग हुनेछ भन्छ, अर्कोतर्फ सांस्कृतिक अचेतनले सन्देश दिन्छ कि सो शताब्दी जातीय दबाब र राष्ट्रियता जागरणको शताब्दी हुनेछ। तर विवेक र कल्पनाले हामीलाई भन्छ– समाधान त्यो बिन्दु हो जहाँ एकीकरण र पृथकताका मागहरूलाई सन्तुलित गर्न सकिन्छ र त्यो सङ्घीय शासन हो।
>
> -कार्लो फ्युन्ते

[20] फ्युन्ते, 1996, पा. 105





चित्र क: जनजाति जनसङ्ख्याको अनुपात, 2001
औसत 37.0%






## सन्दर्भसामग्री

Bhattachan, Krishna B. 2000. 'Possible ethnic revolution or insurgency in a predatory unitary Hindu State, Nepal'. In *Domestic Conflict and Crisis of Governability in Nepal* edited by Dhruba Kumar. Kathmandu: CNAS, pp. 135-162.

Brass, Paul R. 1991. *Ethnicity and Nationalism: Theory and Comparison*. New Delhi: Sage Publications.

Burkgart, Richard, 1984. 'The formation of the concept of nation-state in Nepal,' *Journal of Asian Studies,* Vol. 44, No. 1, pp. 101-125.

Fuentes, Carlos. 1996. 'The federalist way'. In *At Century's End: Great Minds Reflect on Our Times* edited by Nathan P. Gardels. La Jolla, pp. 104-108.

Gellner, David N. 1997. 'Ethnicity and nationalism in the world's only Hindu State'. In *Nationalism and Ethnicity in a Hindu Kingdom: The Politics of Culture in Contemporary Nepal* edited by D. Gellner, J. Pfaff-Czarnecka and J. Whelpton. Amsterdam: Harwood Academic Publishers, pp. 3-31.

Gurung, Harka. 1989. 'Making of a nation,' *Nature and Culture: Random Reflections* by Harka Gurung, Kathmandu, pp. 133-148.

—1997. 'State and society in Nepal.' In *Nationalism and Ethnicity in a Hindu Kingdom: The Politics of Culture in Contemporary Nepal,* edited by D.N. Gellner, J. Pfaff-Czarnecka and J. Whelpton. Amsterdam: Amsterdam: Harwood Academic Publishers, pp. 496-532.

—2001. *Nepal: Social Demography and Expressions*. Kathmandu: New ERA.

—2002a. 'Ethnic diversity and identity in the Himalaya'. Paper presented at World Mountain Peoples Assn. Regional Meeting, Yuksam, Sikkim, 15-19 April.

—2002b. 'Languge, Literacy and Equality'. Keynote address to Conference on Literacy, Language and Social Involvement, Kathmandu, 5 September.

—2002 सी. *जनगणना 2001 अनुसार जाति तथ्याङ्क: प्रारम्भिक लेखाजोखा*। काठमाडौँ: धर्मोदय सभा, जुलाई ।

—2003a. 'Janajati and Dalit: the subjugated in governance'. In *Readings on Governance and Development,* Vol. II, pp. 1-13.

—2003b. 'Nepal: Maoist Insurgency and Indigenous People'. Paper presented at UNITAR Training Programme for Indigenous People's Representatives of the Asia-Pacific, Chiang Mai, 7-12 April, 2003.

—'राष्ट्रिय र जनजाति'। *नेपालको सन्दर्भमा सामाजिक-आर्थिक-राजनैतिक अवधारणाहरू,*

मेरी डेसनद्वारा सम्पादित । काठमाडौँ: हिमाल किताबद्वारा प्रकाशोन्मुख ।
Höfer, András. 1979. *The Caste Hierarchy and the State in Nepal: A Study of the Muluki Ain of 1954*. Innsbruck: Universitatsverlag Wagner.
Hoftun, Martin; Raeper, William and Whelpton, John. 1999. *People, Politics and Ideology: Democracy and Social Change in Nepal*. Kathmandu: Mandala Book Point.
Maharjan, Pancha N. 2000. 'The Maoist insurgency and crisis of governability in Nepal'. In *Domestic Conflict and Crisis of Governability in Nepal* edited by Dhruba Kumar. Kathmandu: CNAS, pp. 163-196.
Mandela, Nelson. 1994. 'The waning nation state,' *New Perspective Quarterly,* Summer.
NESAC. 1998. *Nepal: Human Development Report, 1998*. Kathmandu: UNDP.
गोविन्द न्यौपाने । 2000 । *नेपालका जातीय प्रश्न: सामाजिक बनोट र साझेदारीको सम्भावना,* काठमाडौँ: अध्ययन विकास केन्द्र ।
Oommer, T.K. 1994. 'Race, ethnicity and class: an analysis of relations,' *International Social Science Journal,* No. 139, February, pp. 83-93.
Pfaff-Czarnecka. J. 1997. 'Vestiges and visions: cultural change in the process of nation-building in Nepal.'. In *Nationalism and Ethnicity in a Hindu Kingdom* edited by D. Gellner, J. Pfaff-Czarnecka and J. Whelpton. Amsterdam: Harwood Academic Publishers, pp. 419-470.
Pradhan, Rajendra. 2002. 'Ethnicity, caste, and a pluralist society'. In *State of Nepal* edited by K.M. Dixit and S. Ramachandran. Kathmandu: Himal Books, pp. 1-21.
Sharma, Prayag Raj, 1997. 'Nation-building, multi-ethnicity and the Hindu state'. In *Nationalism and Ethnicity in a Hindu Kingdom,* edited by D. Gellner, J. Pfaff-Czarnecka and J. Whelpton. Amsterdam: Harwood Academic Publishers, pp. 471-493.
Tamir, Yaer. 1995. 'The enigma of nationalism,' *World Politics,* Vol. 47, No. 3, April, pp. 418-440.
Townsend, W. Cameron. 1972. *They Found A Common Language: Community Through Bilingual Education*. New York: Harper and Row.
Whelpton, John. 1997. 'Political identity in Nepal: state, nation, and community'. In *Nationalism and Ethnicity in a Hindu Kingdom* edited by D. Gellner, J. Pfaff-Czarnecka and J. Whelpton. Amsterdam: Harwood Academic Publishers, pp. 39-78.
Zelliot, Eleanor. 1992. *From Untouchable to Dalit*. New Delhi: Manohar Publications.